# श्री बूढा दाहालको कुल देवता पूजा विधि

## गोष्ठाग्नि पूजा तथा देवली




नौ बेतालको रेखी

१ २ ३ ४ ५ ६ ७ ८ ९

अठार मस्टको रेखी

१ २ ३ ४ ५ ६ ७ ८ ९ १० ११ १२ १३ १४ १५ १६ १७ १८

वीर क्षेत्र पाल

१ २ ३ ४ ५ ६ ७ ८ ९ १० ११ १२ १३ १४

ओमप्रसाद दाहाल

## शुभेच्छा मन्तव्य

मप्रसाद दाहालज्यूको रुद्र स्वाहाकार पुस्तकमा मन्तव्यको सौभाग्य भएको थियो । त्यसपछि प्रकाशित पुस्तकहरूमा निरन्तर भेटघाट भए त अटाइन रे । आज सौभाग्यवस ओङ्कारवाणी लिन आउँदा प्रेसमै दाहाल ा शुभ सङ्गम-समागम भयो र आगामी प्रकाशनका लागि शुभेच्छा दिन अत्यन्त हर्ष लागेको छ । आगामी प्रकाशित कृतिहरूको लेखक, सम्वद्ध सबैको उत्तरोत्तर प्रगतिको हार्दिक शुभकामना व्यक्त गर्दछु ।

पं. कविप्रसाद प्याकुरेल
मो. : ९८४११९६६६७
घर : ४८१०७८५

| | | |
|---|---|---|
| प्रकाशक | : | श्री ओमप्रसाद दाहाल |
| प्रथम संस्करण | : | २०६९ |
| समर्पण | : | (१) धामि श्री वासुदेव दाहाल |
| | | (२) धामि श्री पुण्यप्रसाद दाहाल |
| | | (३) धामि श्री निधीरत्न दाहाल |
| | | (४) धामि श्री हर्ष दाहाल |
| | | (५) धामि श्री गड्डुलध्वज खत्री (दाहाल) |
| टङ्कण एवम् आवरण | : | बद्रीप्रसाद अधिकारी |
| सहयोग रु. | : | १०१/- |
| मुद्रण | : | गंगा प्रिन्टर्स, अनामनगर |

# मन्तव्य



ॐ श्री गणेशाय नमः । कुल देवता पूजाको यथार्थ सवै जम्मा भएर देवताको पूजा गर्नु भन्ने हुन्छ । तर यस पुस्तकका कुल देवता पूजा सवै जम्मा भएर गर्ने मात्र नभएर कुल देवताको उत्पत्ति कसरी भयो ? कहिले भयो ? र किन भयो ? भन्ने अर्थ स्पष्ट गर्नुका साथै कुल देवता को-को हुन् ? यिनको पूजा कहिले कहाँ र कसरी गरिन्छ भन्ने पनि प्रस्ट गरिएको छ । कुल देवता पूजा गर्दा के फाइदा हुन्छ ? नगरेमा के हुन्छ ? यसको पनि वर्णन गरिएको छ । यसका अतिरिक्त बुढा दाहालका इष्ट देवता, इष्ट देवी, कुल देवी, कुल देवता साथै बूढा दाहालका संस्कारहरूको बारेमा यथार्थ वर्णन गरिएको छ । यही पुस्तकमा दिइएको विधि बमोजिम कुल देवताको पूजा गरी सुख शान्ति प्राप्त गर्नुका साथै कुलको सम्रक्षण तथा सम्वर्धन गरी वम्स परम्परालाई कायम राख्नु होला भन्ने अनुरोध गर्दछु ।

अन्तमा यस पुस्तकमा भएका कमी कमजोरीलाई औंल्याई सुझाव दिन र कुल देवताप्रति थाहा भएका विशेष कुरा भए प्रदान गर्न अनुरोध गर्दछु ।

ॐ ज्योति शङ्कर
ओमप्रसाद दाहाल



इष्ट देवता



इष्ट देवी
विन्दवासिनी



कुल देवता
कालो मष्ट



क्षेत्रपाल
जिमालकुल देवता



वसन्त माला
कुल देवी





अग्नि बेतालको
उत्पत्ति


आदि मस्ठ


खप्पर मस्ठ


कालो मस्ठ


दाह्रे मस्ठ


टेडी मस्ठ


दुधे मस्ठ


ढाडे मस्ठ


लाटो मस्ठ


बराह मस्ठ


लट्टे मस्ठ


रूपाल मस्ठ


मण्डली मस्ठ


खाप्रे मस्ठ


डडुवा मस्ठ


महा मस्ठ


बङ्गारे मस्ठ


खैरे मस्ठ


खापड मस्ठ

## हवनमण्डप

कर्ता वा आचार्य विंशति हस्तं च निर्मितं मण्डपं शुभम् । मध्यमं षोडश द्वादशहस्त च दशहस्तं च अधमम् ॥ पञ्चपल्लव संयुक्तं पञ्चस्तंभश्च स्तंमीताम् । चतुदिक्षु चतुरद्वारध्वजा सूत्र तोरण वेष्टितम् ॥ मेखला हस्तमात्रं च पुष्पमाला विभूषिताम् । पीत वस्त्रेण वेष्टितं विविध ध्वजा धारणां ॥ अनेन विधिना शाला सर्वकर्मश्च सिद्धिदा ।




## यज्ञकुण्ड विधान

सर्वसिद्धिकरं कुण्ड चतुष्कोण समन्विताम् । पुत्रप्राप्ति निमित्तार्थ योनि कुण्ड विचारयत् ॥
सर्व कल्याण कार्यार्थ अर्ध चन्द्र विनिर्मितम् । शत्रुक्षय निमित्ताय त्रिकोण कुण्ड निर्मितम् ॥
शान्तिकार्य साधनार्थ वृत्ताकार विनिर्मिताम् । मारणाच्चाटनार्थाय षट्कोण कुण्डश्च सिद्धिदाम् ।
वृष्टि आरोग्य प्राप्त्यर्थं पद्मकुण्ड समन्विताम् ।

# विषय - सूची


| क्र.सं. | शीर्षक | पृष्ठ नं. |
|---|---|---|
| १. | मङ्गलाचरण | १ |
| २. | महर्षि भृगुको उत्पत्ति | १ |
| ३. | गोत्रको उत्पत्ति | १ |
| ४. | वत्स गोत्रको उत्पत्ति | २ |
| ५. | वत्सगोत्री दाहालको उत्पत्ति | ३ |
| ६. | वत्स गोत्री दाहालको मुख्य स्थान | ३ |
| ७. | बूढा दाहालको उत्पत्ति | ३ |
| ८. | वत्सगोत्री बूढा दाहालले मान्ने देवता तथा संस्कारहरू | ९ |
| ९. | शिव वत्स गोत्र बूढा दाहालका इष्ट देवता कसरी भए ? | ११ |
| १०. | इस्ट देवी विन्दवासिनी कसरी भइन् ? | १३ |
| ११. | मस्ट-बेतालको उत्पत्ति कसरी भयो ? | १४ |
| १२. | मस्टको स्वरूप कस्तो छ ? | १६ |
| १३. | कुलदेवता पूजाको नाम देबली कसरी भयो ? | १७ |
| १४. | देवली कहिले गरिन्छ ? | १७ |
| १५. | कालामस्ट पूजा विधि | १८ |
| १६. | क्षेत्रपालको उत्पत्ति कहिले र कसरी भयो ? | २७ |
| १७. | क्षेत्रपालको काम | २८ |
| १८. | क्षेत्रपालको पूजा विधि | २९ |
| १९. | वसन्तमालको परिचय र उत्पत्ति | ३५ |
| २०. | वसन्तमालाको पूजा विधि | ३६ |
| २१. | अग्निवेताल उत्पत्ति तथा पूजा विधि | ४१ |

## भृगुवंशी वत्स गोत्र

(बूढा दाहालको कुलदेवता कालामष्ट पूजा विधि)

श्री गणेशाय नमः ।

१. मङ्गलम् भगवान् विष्णु मङ्गलम् च सदा शिवः ।
मङ्गलम् चतुर्मुख ब्रम्हा मङ्गलम् च विनायक : ।
मङ्गलम् कमला लक्ष्मी मङ्गलम् च शिव प्रियाः ।
मङ्गलम् सावित्री माता मङ्गलम् च विनायिका : ।
मङ्गलम् मस्टवेताल कुल पूजा षु सर्वदा ।

२. **महर्षि भृगुको उत्पत्ति** – सृष्टिको आरम्भमा ब्रह्माजीले मरिची आदि १० प्रजापतिहरु मनले चिताएर उत्पन्न गर्नुभयो । यिनलाई ब्रह्माका मानस पुत्र भनिन्छ । भृगु पनि यिनै मानस पुत्रमध्ये एक हुन् । यिनलाई ब्रह्माले त्वचा (छाला) बाट उत्पन्न गर्नुभएको थियो ।

भृगु ऋषिले कर्दम प्रजापतिकी पुत्री ख्याती नामकी कन्यासँग विवाह गर्नुभयो । ख्यातिबाट भृगुका ऋचक नामका पुत्र जन्मिए । वेदका मन्त्रलाई ऋचाबद्ध गरेकाले यिनको नाम ऋचक भयो । ऋचक ऋषिले कुश वंशी गाधी राजाकी पुत्री सत्यवतीसँग विवाह गरे । यिनबाट जामदग्निको जन्म भयो । "वत्स विदा यतौ जामदग्नेय" यस श्लोक अनुसार वत्स र विदा जामदग्निका छोरा हुन् भन्ने बुझिन्छ । यिनै वत्स ऋषिका सन्ततिहरु बत्स गोत्र भएका हुन् ।

३. **गोत्रको उत्पत्ति** - ब्रह्माका मानस पुत्र प्रजापतिहरुबाट असङ्ख्य सन्तानहरू उत्पन्न भए । यिनीहरुलाई एक आपसमा पहिचान गर्न गाह्रो भयो । वैवाहिक सम्बन्धमा पनि अप्ठेरो भयो । त्यसैले बंश पहिचान वैवाहिक सम्बन्ध वैदिक कर्मकाण्ठ तथा सामाजिक शान्ति अमनचैन कायम राख्न सप्तर्षि मण्डलको गठन गरियो ।
वंश सम्रक्षणार्थाय विवाह कर्मकाण्डयो ।

सन्क्षेपात्सुखः बोधाय भगवत्प्रीतये रपि ॥
वम्श सम्सक्षण गर्न, विवाह, कर्मकाण्ड तथा भगवान्को प्रार्थना गर्नलाई पनि गोत्र र प्रवरको गणना गरिन्छ ।

विश्वामित्र जामदग्नि भरद्वाजश्च गौतम अत्रि वशिष्ठ कस्यप इत्तेषाम् सप्त ऋषयः । (धर्मसिन्धु)

यिनै सप्तऋषिहरुबाट ऋषिहरूका आ-आफ्ना वंशअनुसार गोत्रप्रवर कायम भयो । एकै वंशका गोत्र र प्रवरको व्यवस्था गरियो । यही गोत्र र प्रवर उच्चारण गरी सङ्कल्प गरेर वैदिक कर्मकाण्ड तथा वैवाहिक सम्बन्ध कायम गर्न थालियो । यसरी गोत्रोत्चारण गर्नाले सगोत्रमा विवाह भएन र पुर्खाहरु मरेर गए पनि पुर्ख्यौली कायम रह्यो । ब्रह्माका मानस पुत्रदेखि लिएर हालसम्म पनि भारत वर्षमा गोत्रको उच्चारण भै वंश परम्परा कायम रहिआएको छ । कालान्तरमा भारत वर्ष वाहेक अन्य मुलुकमा सगोत्र समागम र धर्मको अभावले निसन्तान भै मुलुक शून्य हुनेछन् ।

४. **वत्स गोत्रको उत्पत्ति** - वत्स गोत्रको उत्पत्ति महर्षि जामदग्निका छोरा वत्स ऋषिबाट भएको हो । "वत्स विदा यतौ जामदग्न्यौ" वत्स र विदा यी दुई जामदग्निका छोरा हुन् । यस भनाइबाट वत्स ऋषि जामदग्निका छोरो हुन् भन्ने बुझिन्छ ।

वत्सा : मार्कन्डेया मान्डुकेया इत्यादय शतद्वयाधिकावत्स गोत्र भेदा-। (वत्स, मार्कन्डे तथा मान्डुक ऋषिका सन्ततिहरु शयभन्दा बढी वत्स गोत्रको भेद छन् ।)
एतेषाम् पन्च प्रवर । वत्स भार्गव, और्व, च्यवन, जामदग्नि । ( वत्स, भार्गव, और्व, च्यवन र जामदग्नि यति प्रवर अर्थात् प्रवर्तक पुरुष हुन् ।) (नि.सि.)

यसरी सृष्टिको सुरुवातदेखि नै वत्स गोत्रको उत्पत्ति भएको र आजतक यस गोत्रमा उत्पन्न सन्ततिले गोत्रोच्चारण पूर्वक वैदिक कर्मकाण्ड तथा वैवाहिक सम्वन्ध गरी आएका छन् । अन्तर

सम्बन्ध (इन् ब्रीडिङ) हुँदा निसन्तान हुने हुँदा सगोत्रमा विवाह निषेध गरिएको छ। गोत्रोच्चारण नहुँदा वंश पहिचान नभै सगोत्रमा सम्बन्ध हुने हुनाले गोत्रको अत्यन्त आवश्यक छ।

## ५. वत्सगोत्री दाहालको उत्पत्ति

**अभिलेख**

आदौ दाशुभट्ट गुजरात वटविहारका राजा थिए। दिल्लीका राजा वादशाहले राज्य लुटी लिएर राज्य भ्रष्ट भएका राजा दाशु भट्ट दुल्लु दह गाउँमा आई बस्या र दाहाल भन्ने पदवि भयो। दैलेखका राजा साहेव ज्यादालाई मन्त्र सुनाएर दुल्लु दह गाउँ विर्ता भयो।

यो अभिलेखवाट प्रस्ट हुन आउँछ कि दाशु भट्ट भारतको गुजरातबाट नेपालको दुल्लु दह गाउँमा आइ बसे र यही दह गाउँकै विर्ता पाएकाले दाहाल भन्ने चलन चल्यो र यही दाहाल थरमा परिणत भयो।

## ६. वत्स गोत्री दाहालको मुख्य स्थान

पन्च देवालय भग्ना दाहग्रामे समिपगे।
दाहाल कूल जातानाम् मुलस्थल्या मिहैवहि।
जुविद्यायाम् तथान्नेत्र सन्ति भग्ना:स्थले स्थले।
तिलानद्यम् शिला तेषु पालकाले विनिर्मित :॥

- आद्यात्म नेपाल और
देवभूमि भारत ग्रन्थ
(योगी नरहरि नाथ)

यस अभिलेखबाट दुल्लुको दाहा गाउँ दाहालहरुको मूल स्थलो हो भन्ने प्रमाणित हुन्छ।

## ७. बूढा दालको उत्पत्ति

बूढा दाहालको उत्पत्तिको बारेमा खोजी गर्दा निम्न किम्बदन्तिहरु फेला परेका छन्। यिनीहरु निम्न प्रकार छन्-

(क) दाशु भट्टका ४ भाइ छोरा थिए - (१) देव शर्मा (२) शिवहरि (३) शिव दास (४) शिवराम ।

दाशु भट्टका चार भाइ छोरा मध्ये जेठा देव शर्मा यजमान गर्थे । माहिला शिवहरि खेतिपाती गर्थे । साहिँला शिवदास भैँसी गोठमा बस्थे । कान्छा शिवराम गाई गोठमा बस्थे । यिनमा माहिलालाई झुसुपाध्य, साहिँलालाई महिषपाध्य र कान्छालाई गोपाध्य भनिन्थ्यो ।

बाह्रौं शताब्दीतिर दैलेखका राजा उदय वर्मालाई दाशु भट्टले मन्त्र सुनाएका थिए । उदय वर्माले दाशु भट्टलाई गुरु दक्षिणा विर्ता दिने कबुल गरेका थिए । दाशु भट्ट मेरो नासो थाति रहोस् बखत आएपछि लिन्याछु भनी फिर्ता गएका थिए । पछि यिनै दाशु भट्टका तीन भाइ छोरा झुसुपाध्य, महिषु पाध्य र गोपाद्यय दैलेखमा भाइ राजा उदय वर्मालाई हाजिरी दिए । उदय वर्माले गुरुपुत्रको स्वागत गरी इच्छा जाहेरी गर्न अनुरोध गरे । ब्राह्मणहरुले भने पिताको थातिरहेको नासो हामीलाई बक्सियोस् । यतिबेला साँझ परिसकेकाले राजाले ६ वटा राँका मगाई तीनै जना ब्राह्मणका दुवै हातमा एक-एक राँको दिई भने तपाईंहरु यो राँको ननिभेसम्म जति भूमि घुम्नु हुन्छ त्यति नै विर्ता पाउनुहुन्छ ।

यसरी हातमा राँको पाएका झुसु महिषु र गोपाध्य दरबारबाट निस्की तीनैतिर लागे । राँको ननिभेसम्म घुमिरहे । राँको निभेपछि कसैको घरमा वास मागी रात विताए । भोलिपल्ट उज्यालो भएपछि फेरि दरबारमा आइ हाजिरी दिए । राजाले कति भूमि घुमे भनी सिपाहीलाई बोलाएर साक्षी बुझ्न पठाए । सिपाहीले साक्षी बुझ्दा झुसुपाध्यले रोपेको खेत घुमेछन् । उनलाई यही विर्ता दिइयो र यहीँ बसी रुपाखेति कहलाए । गोपाध्यले लम्सु गाउँ घुमेछन् । यिनलाई यही विर्ता दिइयो र यहीँ वसी लम्साल कहलाए । महीष पाध्यले बुढु गाउँ घुमेछन् । यिनलाई यही विर्ता दिइयो । बुढुमा बसेकाले यिनका

सन्तानहरुको वुढुका दाहाल भन्ने चलन थियो । कालान्तरमा यिनै वूढा दाहाल भनी कहलाए । यसरी वूढा दाहालको उत्पत्ति भएको बुझिन्छ ।

(ख) दाशु भट्टका सन्तान रवि दास । (शिवदास र महिषुपाध्ये) रवि दासका चेला देवी दास । देवी दासका चेला राधु । राधुका चेला माधु र माधुका चेला धुरु थिए । देवी दासका चेला राधुका एक छोरा र बुहारी थिए । सन्तान नजन्मदै राधूका छोराको मृत्यु भयो । बुहारी राडी भइन् । राधु निसन्तान भए । यता निसन्तान भएको चिन्ता उता आफू मरेपछि राडी बुहारीले दुःख पाउने चिन्ताले वुढाबुढी पिरोलिँदै गए । बुढाबुढी पिरोलिएको देखेर बुहारीले भनिन् तपाईंहरु किन पिरोलिनु हुन्छ । तपाईंको पालनपोषण गर्ने म छदै छु । राधुले भने- तैंले हाम्रो राम्रो सेवा गरिस् तर हामी मरेपछि तैंले दुःख पाउने भइस् । त्यसैले चिन्ता गरेको हो । बुहारीले भनिन्- के गर्नु त कर्मले यस्तै पारिहाल्यो । जस्तो आइपर्छ त्यस्तै खेप्नुपर्छ ।

यसपछि बुहारीले विचार गरिन् ससुराले भनेको ठिक हो । यिनीहरुका शेष पछि मैले अवश्य दुःख पाउँछु । त्यसैले अब बहिनी मागेर ससुराको विवाह गरिदिनुपर्‍यो । बहिनीबाट सन्तान भएपछि उनीहरुको चिन्ता दुर हुन्छ र मेरो पनि कल्याण हुन्छ । तर बुढाका सन्तान हुन्छन्-हुँदैनन् विचार गर्नुपर्‍यो भनी बुढाले पिसाव गर्ने स्थानमा एक पाथी बालुवा राखिदिइन् । बुढाले पिसाव जम्छ भनी बालुवा राखिछ भन्ने विचार गरी त्यसै बालुवामाथि पिसाव गरे । बुहारीले बूढाले पिसाब फेरेको स्थानमा हेर्दा बालुवामा ओखली जस्तै प्वाल परेको देखिन् । यसबाट बुहारीलाई विश्वास भयो बुढाका पक्कै सन्तान हुन्छन् । यसपछि बुहारीले बुढासँग भनिन् बाँचे यदि मलाई आज्ञा दिनुहुन्छ भने म तपाईंका सन्तान हुने व्यवस्था गर्छु । बुहारीका कुरा सुनेर बुढा छक्क परे । बुढाले भने वुहारी तिमीले के कुरा गरेको हामी अभागीको भाग्य पहिले नै फुटिसक्यो । उनीउ फुल्ला ढुङ्गा टुसाउला तर हामीलाई सन्तान सुख हुँदैन ।

बुहारीले भनिन् दैवले चाह्यो भने के हुँदैन ? तपाई हुन्छ मात्र भन्नुस म सन्तानको व्यवस्था गर्छु । बुढाले विचार गरे यसले धर्म पुत्र पाल्ने विचार गरिछ । ठिकै छ जसको भाग्यमा छ । त्यसैले वीर्ता खान्छ । यसपछि बुढाले भने हुन्छ । तिमीलाई सुख हुन्छ भने गर । बुढाको स्वीकृति पाएपछि बुहारीले भनिन् म माइत गएर मेरी बहिनी मागेर आउँछु । तपाईं मेरी वैनीसँग विवाह गर्नुस् । बैनीबाट सन्तान भएपछि मेरो पनि कल्याण हुन्छ र तपाईं पनि निसन्तान हुनुहुन्न । बुहारीका कुरा सुनेर बूढा छक्क परे ।

ससुरा बुहारीका कुरा सुनेर बुढीका मनमा आस पलायो । उनले आफ्ना सम्पूर्ण गहना फुकालेर बुहारीका हातमा राख्दै भनिन्- बुहारी तिमीले भलो कुरा गऱ्यौ । यी सबै गहना तिम्री बैनीलाई पहिल्यै लगाइदेऊ जसले गर्दा उसले बुढासँग विवाह गर्न इन्कार नगरोस् । बुहारीले सासुले भनेजस्तै गरिन् । माइतमा गएर वैनीलाई रिजाइन् । त्यसपछि बाबुआमासँग भनी बैनी मागिन् । बाबुआमाले पनि यो कुरा मन्जुर गरे । ससुरालाई वैनी विवाह गरिदिइन् । बुहारीकी वैनी विवाह गरेपछि राधुका एक छोरा भए । यिनको नाम थियो माधु ।

यसरी राधु बुढाका सन्तान बुढेस कालमा भएकाले बुढा दाहाल खाल भनिन्थ्यो । कालान्तरमा यिनै बुढा दाहाल भए ।

(ग) राधुका छोरा माधु बुढु वीर्तामा बसोवास गर्थे । वयस्क भैरहँदा पनि यिनका सन्तान नहुँदा जैसी देखाउन गए । जैसीले भने- तपार्यंलाई यो वासस्थान उपयुक्त छैन । पूर्वतिर बसाईं सरे सन्तान फैलिन्छन् । जैसीको भनाइ अनुसार माधु बसाईं सर्न उपयुक्त ठाउँ खोज्न घरबाट निस्के । पश्चिमबाट पूर्व लागी मादीसम्म पुगेर पुर्वमा मादी खोटाङको खोक्सेली, बुग्नाम रामपुर रातोमाटे, नाम्दु, काभ्रे र नालाको पानी उपयुक्त ठहराई घर फर्के ।

माधु आफ्नी पत्नीलाई आफूले हेरेका सबै ठाउँ देखाउने र पत्नीलाई सहज लागेको ठाउँमा वसाईं सर्ने इच्छाले पत्नीलाई

साथमा लिई घरवाट निस्के । काली गण्डकीको तिरमा आइपुगेपछि माधुकी पत्नी ज्वरो आएर अस्तव्यस्त भइन् र मर्न लागिन् । पत्नी मर्न लागेको थाहा पाई माधु धुरुधुरु रुन लागे । यसरी रोएका पतिको आँशु पुछ्तै पत्नीले भनिन् तपाईं नरुनुस् म मरे पनि फेरि जन्म लिई तपाईंकै पत्नी हुनेछु र तपाईंका सबै इच्छा पूरा गर्नेछु । तपाईं म वाहेक अरुलाई विवाह नगर्ने कबुल गर्नुस् । माधुले रुँदै भने- म विवाह नगर्ने कबुल ता गर्छु । मानिस मरेपछि के भएर जन्मन्छ । कहिले जन्मन्छ यो सबै दैवको खटन हो । फेरि मानिसै भएर जन्म लिए पनि पूर्व जन्मका ज्ञान नाश हुनाले तिमीले मलाई चिन्दिनौ । रुपरङ्ग फेरिनाले म तिमीलाई चिन्दिन ।

माधुकी पत्नीले भनिन् । तपाईंले मलाई लग्नमा सिउँदामा हालेको सिन्दुर मेरा पोल्टामा छ । म परेपछि त्यही सिन्दुर मेरा निधारमा लगाइदिनु र मेरो शरीर काली गण्डकीमा विसर्जन गर्नु । यही सिन्दुरको टिका लगाएको चिन्ह लिई म ३ वर्षभित्र काली गण्डकीको पूव दिशातर्फ जन्म लिन्या छु । यति भनी पतिका आँशु पुछ्दै काखमा पल्टिन् । त्यहीं उनको मृत्यु भयो । घरगाउँले सँग सहायता मागी माधुले पत्नीको काली गण्डकीमा विसर्जन गरे । पत्नीको शरीरलाई विसर्जन गरी फेरि उनी घर फर्के र घरमै काजक्रिया गरी बसे । दुई वर्ष पछि फेरि उनी घरवाट पूर्वतर्फ लागे । एकदिन नालामा आएपछि साँझ पर्न लाग्यो र ढकाल ब्राम्हण घरमा बास मागी बसे । तिनै ढकाल ब्राम्हणको घरमा एक कन्या जन्म लिएको ६ महिना भएको थियो । माधु जब बास बसेको घरवाट जान लागे तब ती कन्या चिच्याएर रुन थालिन् । कन्याका बाजेले केही लागेको हो कि भनी पाहुनालाई झारफुक गर्न अनुरोध गरी ती कन्या माधुका काखमा राखिदिए । माधुका काखमा राख्नासाथ ती कन्या चुप लागिन् र माधुलाई नै हेर्न थालिन् । माधुले आफ्नी पत्नीले भनेका वचन सम्झी कन्याका निधारमा हेर्दा आफूले पत्नी मरेपछि लगाइदिएको सिन्दुरको टिकाको चिन्ह टर्लक्क देखे । आफ्नी पत्नीले जनम लिएको निश्चय मानी माधुले ती कन्याको

पूर्व वृत्तान्त सुनाई ती कन्या आफूलाई मागे । कन्याका बाजे ढकाल ब्राह्मणले भने यदि यो कुरा सत्य हो भने तिमी बाह्र वर्ष पछि कन्यादान लिन आउनू । बाह्र वर्ष पछि आउँदा यसले तपाईंलाई चिनिछ भने तपाईँलाई नै कन्या दिउँला । बूढाको आशय बुझी माधु त्यहाँबाट हिँडे । बाह्र वर्ष पछि माधु फेरि डुल्दै नालामा पुगेर एउटा चौतारामा बसेर थकाइ मारिरहेका थिए । ती कन्या पनि आफ्ना चौपाया चराएर घरतर्फ फर्कंदै थिइन् । चौतारामा उनले माधुलाई बसिरहेको देखिन् । यसै समयमा उनलाई बाह्र वर्ष अघि यसै मानिसले मलाई काखमा लिएको हो भन्ने याद आयो । घरमा आएर चौपाया तह लगाई बाजेको छेउमा आएर भनिन् । हजुरबा ! बाह्र वर्ष अगाडि मलाई काखमा लिने मानिस त्यही चौतारोमा बसिरहेको छ । नातिनीका कुरा सुनी बूढा अचम्म भए । अरु गोठाला साथीहरुलाई सोद्धा ती कन्याले कसैसँग भेट नगरेको बताए । ढकाल बूढाले विचार गरे दैवसंयोगले यस्तै पारेको होला । तिनै पहिले कन्या माग्ने ब्राह्मण हुन् भने कन्यादान दिनुपर्छ भन्ने सल्लाह गरी ती ब्राह्मणलाई लिन पठाए । माधु घरमा आएपछि घरमै पालेर शुभ लग्न आएपछि कन्यादान दिए । कन्यादान पाएपछि पनि माधुले ती कन्या घर लगेनन् । वरु माधु नै त्यहीँ बसे । माधुका ती कन्या विवाह गरेपछि घुरु, हरि शंकर, र विश्वेदेव पाध्य ४ छोरा भए । धुरुले नाम्दुकाभ्रेमा विवाह गरे र त्यहीँ बसे । धुरुका ३ भाइ छोरा जन्मे । गोगा जयभद्र ज्योतिखर । यी धुरुका सन्तति नाम्दुकाभ्रे भन्दा पूर्वमा रहेका दाहालवहरु हुन् । त्यसैले यिनको सम्पूर्ण सँस्कर मिल्दछ । यसरी दाहालहरूमा बूढा भएपछि सन्तान जन्मेकाले बूढा दाहाल भन्ने प्रथा चलेको किम्बदन्ती पाइन्छ ।

वत्स गोत्री दाहालको शुक्ल यजुर्वेद र माध्यान्दिनी शाखा हो । वत्सगोत्री दाहालले वैदिक सनातन धर्मको पालना गर्दछन् ।

***

## ८. वत्सगोत्री बुढा दाहालले मान्ने देवता तथा संस्कारहरू

**देवता-**

(क) इस्ट देवता - भगवान् शिव (ख) इष्टदेवी - विन्दवासिनी (ग) कुल देवता - कालमष्ट, क्षेत्रपाल रिमाल र अग्नि वेताल (घ) कुल देवी - वसन्तमाला

**बूढा दाहालका सँस्कारहरू**

(क) शिव पाञ्चायन पूजा गर्ने र वैदिक सनातन धर्म मान्ने । (ख) पहिलो दिनको दूधको विगौती राखी सात पत्रे वेर्ने र ११ दिन पछि गाईंभैसी चोख्याउने । न चोख्याइएको दूधको मोही नपार्ने र कुलदेवता वा गोष्टाग्नीलाई धुप नहाल्ने । (ग) कुल देवताको स्थान र दियो सुरक्षित राख्ने विगोत्रीलाई छुन नदिने तर भान्जालाई हुन्छ । (घ) मूल ढोका सामु कसैलाई बस्न नदिने । (ङ) सिस्नो घरभित्र नलाने । (च) पानी नचल्नेलाई घरभित्र पस्न नदिने । (छ) पूर्णिमाको दूध बार्ने । (ज) औंशीको चतुर्दशी र पूर्णिमाको परेवा बार्ने ।

(क) पूर्णिमाको दूध किन वार्ने ? वसन्तमाला देवी चण्डी पूर्णिमाको दिन दूधमा डुबी मरेकी हुनाले सवै पूर्णिमा तिथिको दूध असुद्ध मानी मोही पार्नु नहुने हुनाले उनै भगवतीलाई समर्पण गरिएको हो ।

(ख) औंसीको चतुर्दशी किन वार्ने ? कृष्णपक्ष र शुक्लपक्षको दही मिसाएर मोही पार्नु नहुने भएकाले र चतुर्दशी भगवान् शिवको महापर्व भएकाले उक्त दिनको दूधमा खिर पकाएर शिवलाई भोग लगाई प्रसाद ग्रहण गरिन्छ । त्यसैले औंसीको (कृष्णपक्षको) चतुर्दशी वारने गरेको हो ।

(ग) पूर्णिमाको परेवा किन वारिन्छ ? कृष्णपक्षको पहिलो दिन त्यसमा पनि नन्दा तिथि परेकाले यस तिथिमा यात्रा, नयाँ काम गर्दा, केही

सामान अरुलाई दिँदा झगडा हुने डरले यो तिथि वारिन्छ । तर दूध भने वारिँदैन ।

(घ) दूध पानी नचल्ने जातिलाई किन नदिने ? पानी नचल्ने चाण्डाल जातिहरु निम्न वर्गका फोहोरी र मास भक्षण गर्ने हुन्छन् । यिनीहरु यज्ञको लागि घ्यू, दूध उत्पादन गर्ने पशुहरुको भक्षण गर्दछन् । त्यसैले यिनीहरुलाई बुढा दाहालले दूध दिँदैनन् ।

(ङ) सातपत्रे किन बेरिन्छ ?
यो चराचर जगत्को उन्नति र शान्ति सुव्यवस्था कायम गर्न आवश्यक पर्ने विधान निर्माण गर्नका निमित्त सप्तर्षि मण्डलको व्यवस्था गरिएको छ । यिनै सप्तर्षिले बनाएको विधान बमोजिम सुतकान्तमा यस पशुद्वारा उत्पन्न दूध, दही र घ्यूद्वारा म यज्ञको पूजन गरी अग्निमा आहुति दिनेछु । तबसम्मका लागि यो सुत्केरी पशु र यसद्वारा उत्पन्न नव पशुलाई पनि केही नहोस् भनी कामना गरेर सप्तर्षिको नाम लिँदै सातपत्रे बाँधी गोरस सन्चय गर्ने स्थान माथि राखिन्छ ।

(च) ११ दिनमा मात्र गाई चोख्याउने किन ?
१० दिनसम्म सुत्केरो बार्नुपर्ने हुनाले १० दिनको दूध दही जमाएर ११ दिनमा चोख्याइन्छ ।

(छ) कुलदेवताको स्थान र दियो किन सुरक्षित राख्ने ?
सगोत्री वाहेक अरुले छोएमा कुलदेवता रिसाउँछन् । त्यसैले सुरक्षित राख्नुपर्छ ।

(ज) मूल ढोका अगाठि बस्नु नहुने कारण के हो ?
आवागमनमा वाधा नपरोस् र मूल दियोमा कसैको नजर नपरोस् भनेर ढोकासामु नबस्नु भनेको हो ।

(झ) सिस्नु घरभित्र लानु किन हुँदैन ?

क्सैले नराम्रो श्राप दिँदा तेरा घडेरीमा सिस्नो उम्रियोस् भन्छन् । वंशनासक बनस्पति भएकाले घरभित्र लादा त्यसको वीउ झरी सिस्नो उम्रेला भन्ने डरले घरभित्रै नलगेको हो ।

(ञ) पानी नचल्नेलाई घरभित्र पस्न किन नदिएको ?
पानी नचल्ने चाण्डाल जातिहरु फोहोरी, उग्र स्वभाव र निर्दयी हुने हुनाले बाल, बृद्ध डराउँछन् । रोग सर्छ भनी घरभित्र पस्न नदिएको हो ।

९. **शिव वत्स गोत्र बुढा दाहालको इष्ट देवता कसरी भए ?**
परापूर्व कालमा ब्राह्मण र भगवान् शिवको वैमनस्यता भएको थियो । त्यसैले ब्राह्मणहरु यज्ञ गर्दा शिवको भाग दिँदैनथे । वैशाख शुक्ल पूर्णिमाका दिन ब्राह्मणहरुले यज्ञ गर्न लागे तर शिवको भाग राखेनन् । शिवलाई ब्राह्मणसँग असह्य रिस उठ्यो र ब्रह्म यज्ञ विथोल्न शिवसैन्य पठाउनु भयो । शिव सैन्य आएर यज्ञ विथोल्न लागे । ब्राह्मणहरु त्राहित्राहि भए । यसरी ब्राह्मणहरु त्राहित्राहि भएपछि भृगुले यज्ञाग्निबाट सेना उत्पन्न गरी शिव सैन्यलाई परास्त गर्नुभयो । यसरी भृगुले आफ्ना सैन्य परास्त गरेको देखी भगवान् शिवलाई अत्यन्त क्रोध उत्पन्न भयो र शिवले आफ्नो अघोर मुखबाट अष्ट भैरवको उत्पत्ति गर्नुभयो । अष्ट भैरवले शिवको आज्ञाअनुसार ब्रह्म यज्ञमा गएर विध्वंस गर्न लागे । कसैले आगोमा पानी हाल्न लागे । कसैले होता र आचार्यलाई पिट्न लागे । कसैले हवन गर्न खिर पकाउन तताएको दूधमा बालवालिका डुबाएर मार्न लागे । कसैले नैवेद्य पाकशाला विनष्ट गर्न लागे । कतिले यज्ञका पक्वान आफैं खान लागे । यज्ञमा त्राहित्राहि भयो । भैरवको उत्पातबाट क्रोधित भृगु आदि ऋषिले आफ्नो शक्तिबाट ९ वटा ब्रह्म बेताल उत्पन्न गरे । यी ब्रह्म वेतालले अष्ट भैरवलाई युद्धमा परास्त गरिदिए । भैरवहरू परास्त भएपछि भगवान् शिवलाई अत्यन्त क्रोध उत्पन्न भयो र आफ्नो जटा फुकाएर स्फटिकको खम्बामा फड्कार्नुभयो । यसबाट महाभयङ्कर डरलाग्दा १८ मस्टको

उत्पन्न भयो । (१) आदि मष्ट (२) खप्पर मस्ट (३) कालो मस्ट (४) दाह्रे मस्ट (५) टेडी मस्ट (६) दूधे मस्ट (७) ढाडे मस्ट (८) लाटो मस्ट (९) बराह मस्ट (१०) लट्टे मस्ट (११) रुपाल मस्ट (१२) मण्डली मस्ट (१३) खाप्ले मस्ट (१४) डडुवा मस्ट (१५) महामष्ट (१६) बङ्गारे मस्ट (१७) खैरे मस्ट (१८) खापड मस्ट उत्पन्न भए । यी मस्टहरू कालाग्नि रुद्रझैं आक्रमण गर्न जाइलागे । बेताल र मष्टको महाभयङ्कर युद्ध भयो । बेतालले मस्टका अनेक अङ्गभङ्ग गरिदिए । कालो मस्टको दाया खुट्टो भाँचिदिए, बायाँ आँखा फोडिदिए । बेतालको आगाको ज्वालाले मष्टको शरीर कालो भयो । त्यसैले मष्टको नाम कालो मस्ट भयो । बेतालको उत्पात देखेर मस्टलाई सही सक्नु भएन । रिसले व्याकुल भएर काला मस्टले बेताललाई उचालेर पछारी यज्ञ अग्निमा तेर्स्याए र छातीमा लातले थिचि बेतालको वस गरे । अग्नि शान्त भयो । प्रकृति सफा भइन् । अरु मस्टले ब्राह्मणहरुलाई पाता कसी राखे र यज्ञाग्निमा आहुति दिन तयार भए । ब्रह्माले यो कुरा चाल पाई तत्काल यज्ञमा पुगी ब्राह्मणहरुलाई माफ माग्न लगाई यो कार्य रोक्नुभयो । ब्रह्माको अनुरोध अनुसार मस्टले भने यति तिमीहरु बाँच्न चाहन्छौ भने शिवलाई मान्छौँ भन्ने प्रण (वाचा) गर । ब्राह्मणहरुले मस्टका कुरा स्वीकार गरेर भने- हामी सधैं शिवलई आराधना गरी यज्ञमा आहुति दिन्छौँ । हाम्रो इस्ट देवता शिवलाई नै मान्छौँ । यज्ञमा वलिदिने भेडो मस्टलाई बलि दिन्छौँ । बेतालद्वार मस्टका अङ्गभङ्ग भएकाले बेताललाई नै मस्टको संरक्षण बनाउँछौँ । यज्ञको उत्तरपट्टि वसी चतुरमुख ब्रह्माको सामु ब्राह्मणहरुले तिलजौकुश लिई प्रण गरेको हुनाले आजसम्म पनि यज्ञको उत्तरपट्टि शिवको लागि छुट्टै पणितापात्र राखिन्छ । यसै समयदेखि भगवान् शङ्कर ब्राह्मणहरुका इस्ट देवता भए ।

**प्रणहरू (वाचा)**

१. हामी सधैं शिवको आराधना गरी यज्ञमा आहुति दिन्छौं ।
२. भगवान् शिवलाई नै इस्ट देवता मान्छौं ।
३. यज्ञमा बलि दिने मेढो मस्टलाई बलि दिन्छौं ।
४. बेतालले मस्टका अङ्ग भङ्ग गरेकाले बेताललाई नै मस्टको संरक्षक बनाउँछौं ।

**१०. इस्ट देवी विन्दवासिनी कसरी भइन् ?**

परापूर्वकालमा देवता तथा ब्राह्मणहरुले भगवति वास्ता नगरेकाले भगवतीले मर्त्यमण्डललाई त्यागिदिइन् । भगवतीले त्यागनासाथ यो ब्रह्माण्ड निस्तेज भयो । सूर्यको किरण मन्द भयो । चन्द्रमाले अमृत वर्षण गर्न छोडे । वायु गति विहीन भयो । पृथ्वी शुस्क भइन् । प्राकृतिक वनस्पतिहरु उम्रन छोडे । चराचर जगतका प्राणीहरु उकुशमुकुस भए । जब सास फेर्न गाह्रो भयो तब सम्पूर्ण ब्राह्मणहरु प्रजापति ब्रह्माकहाँ गए र दण्डवत् प्रणाम गरी भन्न लागे- त्राहिमाम् परमपिता यो के अनर्थ भयो ? सारा जगत् शक्ति विहीन छ । अब हाम्रो कसरी कल्याण हुन्छ ? हाम्रो रक्षा गरिबक्स्योस् ।

ब्राह्मणहरुका कुरा सुनेर प्रजापति ब्रह्माले भन्नुभयो- तिमीहरुले भगवतीको वास्ता नगरेकाले उनले मर्त्यमण्डललाई त्यागिदिइन् । त्यसैले यो जगत् शक्तिविहीन भएको हो । अब उनै शक्तिमाता भगवतीको उपासना गर । अनि मात्र शक्तिमाता प्रसन्न भएर मर्त्यमण्डलमा आउनुहुन्छ । जब शक्तिमाता यस मत्यमण्डलमा आउनुहुन्छ तब यो चराचर जगत् शक्तिसम्पन्न हुन्छ ।

ब्रह्माको आज्ञाअनुसार सबै देवता र ब्राह्मणहरुले भगवतीको उपासना गर्न लागे । ब्राह्मणहरुको पुकारा सुनी चैत्र कृष्ण नवमीमा

भगवतीको उत्पन्न हुनुभयो । सबैले भगवतीको दर्शन गरे । भगवतीले सोध्नुभयो- हे ब्राह्मण हो ! तिमीहरुले मलाई किन आराधना गऱ्यौ । ब्राह्मणहरुले भने हे परमेश्वरी ! तपाईंले यो चराचर जगत्लाई त्यागनाले हाम्रो यो अवस्था भयो । हामीले तपाईंको महत्व नबुझेर वास्ता गरेनौं । हाम्रो अपराध क्षमा गरिदिनुस् । जसरी छोराले गरेको अपराध आमाले माफ गर्छिन् त्यसैगरी हामीलाई आफ्नै पुत्र सम्झी हाम्रो अपराध क्षमा गर्नुहोस् । हामीलाई कहिल्यै शक्ति विहीन नगर्नु । सधैं हाम्रो साथमा रहिरहनुहोस् ।

ब्राह्मणको स्तुतिले प्रसन्न भएकी भगवती अम्बाले भन्नुभयो- हे ब्राह्मण हो ! तिमीहरुलाई शक्ति सम्पन्न गर्न यो चराचर जगतको रक्षा गर्न म सधैं विन्ध्याचल पर्वतमा वास गर्नेछु । त्यहीँ सबैले मेरो पूजा-आराधना गर्नु । जसले यज्ञाग्नि प्रज्जलित गरी दीपको संस्कार गर्छ । त्यसैको दीपको म ज्योतिमा वास गर्छु । त्यसै समयदेखि भगवती विन्ध्याचल पर्वतमा बसिन् र विन्ध्यवासिनी नाम भयो । यिनै विन्ध्यवासिनीलाई ब्राह्मणहरूले इस्ट देवी मानी पूजा गर्न थाले ।

## ११. मस्ट-बेतालको पूजा किन गरिन्छ ?

भगवान् शिवका अघोरमुखबाट १८ मस्टको उत्पत्ति भयो । यी मस्टहरु ब्राह्मणलाई शिव आराधनाको वाचा गराई फेरि शिवजीकैंमा फर्किए । मस्टहरु शिवकहाँ पुगेर भगवान्लार्य दण्डवत् प्रणाम गरी भन्न लागे । हामीले ब्रह्मयज्ञ विध्वंश गरी ब्राह्मणलाई चारवटा प्रण गराएर आयौं । अव हामी के गरौं ? आज्ञा होस् । मस्टका कुरा सुनेर शिव अत्यन्त प्रसनन हुनुभयो र भन्नुभयो- हे मस्ट हो ! तिमीहरुले ब्राह्मणलाई शिवशक्तिको प्रभाव ज्ञान गरायौ यसैले म तिमीहरुसँग प्रसन्न छु । अब

तिमीहरु तिनै ब्राह्मणको रक्षा गरेर बस किनकि हामीले ब्राह्मणको रक्षा गर्नुपर्छ। प्रजापति ब्रह्माका सन्तान वृद्धि नभए यो चराचर जगत् चल्दैन र सृष्टिको अन्त हुन्छ साथै वैदिक सनातन धर्मको पनि नास हुन्छ। ब्राह्मणहरुले यज्ञमा आहुति दिन्छन् र देवताहरुको पुष्टि हुन्छ। नत्र देवताहरुको शक्ति क्षीण हुन्छ र म्लेक्षशक्ति वृद्धि भई चराचर जगत्मा अशान्ति फैलिन्छ।

शिवले भन्नुभयो- "दैवाधिन जगत् सर्व मन्त्राधिनम् च देवता ते मन्त्रा ब्राह्मणाधिनम् तस्मात् ब्राह्मण देवता।" यो सम्पूर्ण जगत दैवको अधिनमा छ। देवताहरु मन्त्रका अधिनमा रहन्छन्। मन्त्र ब्राह्मणहरूका अधिनमा रहन्छन्। त्यसैले ब्राह्मण पनि देवता नै हुन्। ब्राह्मणले आफ्ना अधिनमा रहेका मन्त्र उच्चारण गर्नाले देवताहरु कर्ममा सक्रिय हुन्छन् र यो चराचर जगतको कार्य सुचारु रहन्छ। त्यसैले मैले ब्राह्मणको रक्षा गर्ने पर्छ। यसपछि भगवान् शङ्करले चतुरमुख ब्रह्मालाई बोलाएर भन्नुभयो- हे ब्रह्मा! रुद्र तेजले शक्तिहिन भएका ब्राह्मणहरुको यिनै मस्टले संरक्षण गर्नेछन्। त्यसको लागि ब्राह्मणहरु कुल जम्मा भई १८ मस्टको पूजा गरुन्। शिवको आज्ञा अनुसार प्रजापति ब्रह्माले ब्राह्मणहरू सबै जम्मा गराई मस्ट पूजा गर्ने व्यवस्था गर्नुभयो। ब्राह्मणहरू कुल जम्मा भई पूजा गरेकाले यस पूजाको नाम कुल पूजा रहन गयो।

सृष्टिको सुरुमा ब्रह्माका मानसपुत्र नौ जना ऋषिका सन्तान मात्र भएकाले ब्राह्मणले नौ-प्रजापतिका सन्ततिलाई प्रत्येकलाई २/२ मस्ट पूजा गर्ने आज्ञा दिनु भयो। ब्रह्माले भन्नुभयो जुनजुन बेताललाई मस्टले बस गरेका थिए त्यैत्यै मस्ट तथा जुन मस्टले ब्राह्मणले पाता कसेका थिए तिनैतिनै मस्ट तिनै ब्राह्मणका सन्ततिसहित कुल जम्मा भई पूजा गर्नु। प्रजापति ब्रह्माको आज्ञा ब्राह्मणले पालना गरे। आ-आफ्ना वंशका सन्ततिहरु कुल जम्मा गरी २/२ वटा मस्ट र १/१ वटा बेताललाई देवता मानी पूजा गर्न लागे। अग्नि बेतालले कालोमस्टलाई

अङ्गभङ्ग गरेकाले र भृगुलाई खाप्रे मस्टले पाता कसेकाले भृगुवंशी वत्स गोत्री ब्राह्मणहरुले पूजा-आराधना गर्न लागे । चण्डी पूर्णिमामा गरेको यज्ञ मस्टहरुले विध्वंश गरे । त्यसपछि जेष्ठ शुक्ल पूर्णिमामा ब्राह्मणहरु कुल जम्मा भई यज्ञ गरी मस्टको पूजा गरे र मस्टलाई वलि दिए । यसै दिनदेखि देवली पूजाको प्रचलन सुरु भयो र मस्टको पूजा-आराधना प्रारम्भ भएकाले यस पूर्णिमाको नाम मस्ट पूर्णिमा रहन गयो । कुल देवताको उत्पत्ति चण्डी पूर्णिमामा भएकाले कतिले चण्डी पूर्णिमामै कुल देवताको पूजा गर्दछन् तर ब्राह्मणले मस्टको आराधना जेष्ठ शुक्ल पूर्णिमामा गरेकाले जेष्ठ शुक्ल पक्षमा नै देवली गर्नु उपयुक्त मानिन्छ । शिवको आज्ञा अनुसार मस्ट तथा बेतालले ब्राह्मणको रक्षा गर्ने हुनाले मस्ट तथा बेतालको पूजा गरिन्छ ।

## १२. मस्टको स्वरूप कस्तो छ ?

महा भयङ्करम् रूपम् कृष्ण वर्ण समन्वितम् ।
खड्गपाणी जटाधारी शिवाम्स शिव चिन्तकम् ॥
रुद्र तेज समायुक्तम् कृष्ण चामर पाणीनाम् ।
कालामष्ट महाकाल पाणी घाण मनोहरम् ॥
दक्षपादश्च पाङ्गुलम् वाम नेत्र न दृष्यते ।
त्रिवेणी वसते देव त्र्यम्बकम् च त्रिआयुधम् ॥
वायू वाह महातेजम् दिव्य देह मनोहरम् ।
अग्नि बेताल संयुक्त क्षेत्रपाल समन्वितम् ॥
अग्नि बेताल सहदेव दिपज्योति निवासितम् ।
क्षेत्रपाल सह देवी वसन्तमाला च संस्थितम् ॥
चतुर्देवम् च सम्युक्तम् दोचौपाय च रक्षणम् ।

**१३. कुल देवता पूजाको नाम देवली कसरी भयो ?**

शिवलाई इस्ट देवता मानी यज्ञको उत्तरमा प्रणितापात्र राखी यज्ञ गर्न थालियो । यज्ञमा बली दिन छोडी मस्टलाई बली दिन शुरु गरियो । ब्रह्माहरू प्रत्येक वर्ष उत्तरायण दक्षिणायणमा गोस्टाग्नि पूजा र मस्ट पूर्णिमा पक्षमा बली पूजा गर्दथे । कुनै वर्ष बली दिन बिलम्ब भएमा मस्टहरू आफैं देवली भन्दथे । त्यसैले कुल पूजाको नाम देवली भयो ।

**१४. देवली कहिले गरिन्छ ?**

गृष्मर्तौ च सिते पक्षे उत्तरायण प्रपूजयेत् ।
हेमन्तौ च सिते पक्षे दक्षिणायण पूजयेत् ॥

"गाम रुद्र दैवताकम" गाइका अधिस्ठाता गोठका महारुद्रलाई प्रत्येकले ६/६ महिनामा गोस्टाग्नि पूजा गरिन्छ र मस्टलाई क्षेत्रपाल वसन्तमाला र अग्नि बेताललाई पनि खीर, बाबर, घ्यूको बलि गरिन्छ । उत्तरायणमा गरिने पूजालाई उभौलि र दक्षिणायणमा गरिने पूजालाई उधौलि भनिन्छ ।

देवली वा गोष्टाग्नि पूजा चण्डी पूर्णिमा पछिको शुक्लक्षको पन्चमीदेखि गैडु वा मस्ट पूर्णिमासम्म उत्तम मानिन्छ । कुनै कारणवस बाध्य परे वा गुरु शुक्र अन्ध हुने भएमा अगाडि जेष्ठ शुक्ल द्वितीया, तृतीया र पछाडि आषाढ कृष्ण पन्चमीसम्म पनि गरिन्छ । यसमा पनि नभए आषाढ शुक्लमा गर्नुपर्छ । आषाढ शुक्लमा पनि नभए त्यो वर्ष देवली पूजा हुँदैन । उधौली पूजा मार्ग शुक्ल पन्चमीदेखि पौष शुक्ल त्रयोदशीसम्म गर्नुपर्छ ।

## १५. मस्ट पूजा पद्धति तथा काला मस्ट पूजा विधिः

मस्टश्च दक्षिण पार्श्वे क्षेत्रपाल प्रपूजयेत् ।
पद्म चतुर्दश कुर्यात् त्रय त्रय पुनः कुरुः ॥

पूजयेत् गिघ्न नाशम् च दीप कलश पूर्वक ।
क्षेत्रपाल वलि दत्वा मस्ट बली यथा विधि ॥

पक्वान्नम् पायस क्षीरम् पूवान्नम् वावरस्तथा ।
ओदनम् च बली दत्वा मधु घृत सुशर्करा ॥

छाँग शोणित बलिश्चैव मत्स्य माम्स जलस्तथा ।
सर्वत्र विधिवत् कुर्यात् दुग्धेनोत्सर्गमाचरेत् ॥

**मस्टोपाख्यान**

**भैरव्युवाच**

साधनानी च देवानी अन्यानी यानिकानि च ।
एतानि देव देवेश तदुक्तानि श्रुतानि च ॥१॥

मस्ट बेताल रुद्रश्च भैरव भैरवानी च ।
अन्ये च देवानाम् च साधना विधि कथ्यताम् ॥२॥

**भैरवौवाच**

श्रृणु देवी प्रवक्ष्यामि सावधान तथा श्रृणु ।
मस्ट बेताल साधनम् सुख सम्वृद्धि वर्धनम् ॥१॥

गुह्याति अति गुह्यम् च देवनामंऽपि दुर्लभम् ।
श्रीसम्पत्ती प्रदत्तश्च धनधान्ये प्रवर्धनम् ॥२॥

साधनम् मस्ट वेताल इष्ट देवम् च ईश्वरी
अस्य साधन मात्रेण सर्वैश्वर्य प्रजायते ॥३॥

पद्म अस्ट दश कृत्वा त्रय त्रय त्रयेण च ।
पूजयेत् मस्ट देवाश्च त्रयकाल त्रयो त्रयम् ॥४॥

गृहे गोस्टे च मन्दिरे त्रिवेणी शिव सन्निधौ ।
आवाहयेत् पूजयेत् देव बली दद्यात् यथा विधि ॥५॥

अज मेष मृगश्चैव खरोस्ट छाँगवेव च ।
यथा विधि बली दत्वा सर्वकार्यार्थ साधनम् ॥६॥

पुनः पद्म नव निर्माय नवै त्रय त्रय कुरु ।
पूजयेत् देवा बेताल त्रयकाल त्रयोत्रय ॥७॥

विधिवत् शोडषो पूजा पाद्यार्घादि पयो घृत ।
बेताल बली न दद्यात् त्वाम् दद्यात् घृत शर्करा ॥८॥

सर्व विघ्न विनासार्थ पूजयेत् गणनायक ।
इशाने कलशम् धृत्वा पूजयेत् विधि पूर्वक ॥९॥

पूर्वश्च दीप संस्थाप्ये षड्कोणौ परि पूजयेत् ।
मध्य गणपतिश्चैव इशाने च षडानन ॥१०॥

आदि प्रत्यादि देवाश्च कलशे स्कन्ध पूजयेत् ।
ग्रह योगिनी दिक्पाल अस्र आयुध पूजयेत् ॥११॥

हुत्वाऽग्नि तिल आर्ज्यम् पायस घृत शर्करा ।
एवम् विधे कृत्वा पूजा सर्वत्र सिद्धिदायक ॥१२॥

पूजयेत् मस्ठ बेताल सर्वकामश्च सिद्धये ।
अभक्ताय नदातव्यम् दातव्यम् विघ्न जायते ॥१३॥

*श्री ॐ ज्योति शङ्कर रचित मस्टोपाख्यान सम्पूर्णम् ।*

**ब्रम्हौवाच ।**

मरिची आदि मस्टश्च अत्रि खप्पर एव च ।
भृगु कालोऽर्थ अङ्गिरा दाह्रे मस्ट प्रपूजयेत् ॥१॥
पुलस्त्ये दुग्धे मस्टश्च पुलह टेडी एव च ।
क्रतुश्च पूजयेत् ढाणे लाटो वशिष्ट पूजयेत् ॥२॥
वराहं पूजयेत् दक्षे उपमस्ट यथा क्रम ।
मरिची लट्ट मस्टश्च रुपाल अत्रि एव च ॥३॥
भृगृश्च पूजयेत् खाप्रे अङ्गिरा मण्डली तथा ।
पुलहस्ते डढुवाश्चैव महामस्ट पुलहथा ॥४॥
बँगारे च क्रतुश्चैव वशिष्ट खैरे एव च ।
खापड पूजयेत् दक्षे मस्ट पूजा यथाक्रम ॥५॥
घृत वावर पूवान्न पायसम् दधि शर्करा ।
कुस्माण्ड नारिकेलश्च कदली कनकाम्बुज ॥६॥

**मस्ट पूजा पद्धति :**

प्रथम विनियोगश्च द्वितीय न्यास एव च ।
तृतीयम् ध्यायताम् देव चतुर्थम् दिग्बन्धम् ॥
पञ्चमम् आवाहयत देव षष्टमम् प्राण स्थापनम् ।
सप्तमम् षोडशो पूजा अस्टमम् च विसर्जनम् ॥

(क) **विनियोग** - अस्य श्री कालामस्ट पूजन मन्त्रस्य महादेव ऋषि गायत्री युष्णिक अनुस्टुपछन्द कालामस्ट देवता ऐँ जीव ह्निँ शक्तिम् क्लीँ किलकम् आवाहन पूजने विनियोग ।

(ख) **न्यास**

**करन्यास** : ॐ कां अङ्गुस्ठाभ्याम् नमः । ॐ लां तर्जनीभ्याम् नमः । ॐ मं मध्यमाभ्याम नमः । ॐ सं अनामिकाभ्याम नमः । ॐ टं कनिष्ठिकाभ्याम् नमः । ॐ कालामस्टाय करतलकर पृस्टाभ्याम् नमः ।

**षडङ्गन्यास** : ॐ काँ हृदयाय नमः । ॐ लाँ शिरसे स्वाहा । मँ शिखाय वौषट् । ॐ सँ कवचाय हुँ । ॐ टँ नेत्राय वौषट् । ॐ कालामस्टायै नमः अस्त्राय फट् ।

(ग) **दिङ्न्यास** : ॐ पूर्वे रक्षतु आदिमस्टश्च आग्नेय खप्परस्तथा । दक्षिणे दाह्रे मस्टश्च टेडी मस्टश्च नैऋते ॥ प्रतिचे दुधे मस्टश्च ढाणे मस्टश्च वायवे ॥ उत्तरे लाटो मस्टश्च इशाने खापरे तथा ॥ मध्य रक्षेत कालो मस्ट वेतालादि समन्वितत ॥ एव दशदिशो रक्ष भगवान् शिव शङ्कर ॥

(घ) **ध्यान** - कृष्णवर्ण महातेज बल बुद्धि समन्वित । खड्गवाणि जटाधारि दिव्यदेह मनोहर । कृष्णचामर हस्तौ च घाण त्रिशुल धारिणे । ध्यायत्वाम् पूजनार्थाय प्रसन्न भव सर्वदा ।

(ङ) **स्थापना** : थपना वा मूर्ति राख्ने र ११ फन्का धागो बेर्ने ।

(च) **आवाहनम्** - आवाह्यताम् महादेव कुल पूजा करोम्यहम् । यावत् पूजा करिस्यामि तावत्वाम् सुस्थिरो भव : ॥

(छ) **प्राण प्रतिष्ठाः** विनियोग अस्य श्रीप्राण प्रतिष्ठामन्त्रस्य ब्रह्माविष्णुमहेश्वरा ऋषयः । ऋग्यजुःसामनि च्छन्दासि क्रियामयवपुःप्राणाख्या देवताआँ बीजम् । ह्रीँ शक्तिः । क्रौँ कीलकम् । अस्याम् नूतन यन्त्रस्य प्राणप्रतिष्ठापने विनियोगः (करेणाच्छाद्य)

ॐ आँ ह्रीं क्रौं यँ रँ लँ वँ शँ षँ सँ हँ सः सोहम् भो कालामस्टः यन्त्रस्य प्राण इह प्राणाः पुनः ॐ आँ ह्रीं क्रौं यँ रँ लँ वँ शँ षँ सँ हँ सः सोहम् भो कालामस्ट यन्त्रस्य जीव इह स्थितः ॥२॥ ॐ आँ ह्रीं क्रौं यँ रँ लँ वँ शँ षँ सँ हँ सः सोहम् भो कालमस्ट यन्त्रस्य सर्वेन्द्रियाणीह स्थितानि ॥३॥ ॐ आँ ह्रीं क्रौं यँ रँ लँ वँ शँ षँ सँ हँ सः सोहम् भो कालामस्ट यन्त्रस्य वाङ्मनस्त्वक्चक्षुः श्रोत्रजिह्वाघ्राण पाणिपादपायू पस्थानि इहैवागत्य सुखम् चिरम् पिष्ठन्तु स्वाहा ॥४॥

ॐ मनोजूतिर्ज्जुषतामाज्ज्यस्य बृहस्पतियज्ञमिमन्तनोत्वरिष्टम् यज्ञ समिमन् दधातु ॥ विश्वेदेवा सऽह मादयन्तामों ३ ॥ प्रतिष्ठ ॥

(ज) **आसनम्** - अनेक रत्न संयुक्तम् सुन्दरम् सुमनोहरम् । सिंहासन मयादत्तम् गृहाण परमेश्वर ॥

(झ) **पाध्यम्** - अनेक तीर्थ संयुक्तम् सुगन्धि निर्मलम् जलम् । पाद प्रच्छालनार्थाय गृहाण परमेश्वर ॥

(ञ) **अर्घ्यम्** - अर्घ्यम् गृहाण देवेश गन्धपुस्पाक्षता एव युत दधि सर्पि दुर्वा कुश तिल जल सह । करुणा कर हे देव गृहाणार्घ्यम् नमोऽस्तुते ।

(ट) **आचमनीयम्** - अनेक नदी संयुक्तम् सुस्वादम् निर्मलम् जलम् । आचमनार्थ मयादत्त गृहाणाम् परमेश्वर ॥

(ठ) **स्नानम्** - गङ्गा शिवदुती काली गण्डकी निर्मलम् जलम् । स्नापितोसी मयादत्तम् गृहाणाम् परमेश्वर ॥

(ड) **पन्चामृतम्** - दधिधृत गुणश्चैव मधुपय समन्वित । पन्चामृतम् मयादत्तम् गृहाणाम् परमेश्वर ॥

(ढ) **चन्दनम्** - श्रीखण्ड चन्दनम् दिव्यम् गन्धाढ्य सुमनोहरम् । लेपनार्थ मयादत्तम् गृहाणाम् परमेश्वर ॥

(ण) **यज्ञोपबित** - ॐ यज्ञोपवितम् परमम् पवित्रम् प्रजापतेर्यत्सहजम् पुरस्तात् । आयुष्यमग्र्याम् प्रतिमुन्च शुभ यज्ञोपवीतम् बलमस्तु तेज ॥

(त) **बस्त्र** - सर्वभूषाधिके सौम्य लोकलज्जा निवारणे । मयोपपादिते तुभ्यम् श्वेतवास च प्रतिगृह्यताम् ॥

(थ) **सिन्दुरम्** - कुङ्कुम कस्तुरी गन्धम् रक्तचूर्ण समन्विताम् । सिन्दुर चूर्ण मयादत्तम् गृहाणाम् परमेश्वर ॥

